# के विज्ञानले भगवान नकार्न सक्छ?

nepalnews.com/news/science-tech/15866-2020-01-24-12-18-55



पहिले नै स्पष्ट भनूँ, यो कुनै धार्मिक एजेन्डा फैलाउने लेख होइन। म भगवानमा विश्वास गर्दिनँ, तर म कट्टर नास्तिक पनि होइन।

दस वर्षसम्म साइन्टिफिक अमेरिकनको सम्पादक हुँदा हामी  समस्त चराचर जगतको सिर्जना भगवानले गरेको भन्ने 'चतुर परिकल्पना'को असत्यताबारे लेख्थ्यौँ। तर सन् २००८ मा मैले पत्रकारिता छोडेर आख्यानतर्फ कलम चलाएँ, अल्बर्ट आइन्स्टाइन र क्वान्टम सिद्धान्त अनि ब्रह्माण्डको अचम्मका चीजबारे उपन्यास लेखेँ। त्यसताका  भगवानबारे कुराहरू मेरा किताबमा पटकपटक आउन थाल्यो।

के वैज्ञानिकहरूले ब्रह्माण्डको उद्देश्यबारे जवाफ दिनुपर्छ? धेरैले विज्ञान र धर्मलाई पूर्णतः फरक मान्छन्, जस्तै विकासवादी जीवशास्त्री स्टेफन जे गोल्डले यी दुईलाई 'कहिल्यै नठोक्किने साम्राज्य' भनेका छन्।

तर भौतिकशास्त्रीहरूको अनुसन्धान दार्शनिक र धर्मशास्त्रीको प्रश्नमा ठोक्किएको छ– के ब्रह्माण्ड अनन्त र अनादि छ? किन यसले गणितीय नियमको पालना गर्छ वा ती नियम अपरिहार्य छ? अझ महत्त्वपूर्ण, ब्रह्माण्ड किन छ?

मध्यकालका दार्शनिक थोमस एक्विनसले यस्तै प्रश्न आफ्नो १३ औँ शताब्दीको किताब सुम्मा थियोलोजिकामा गरेका छन्। उनले व्याख्या गरेका छन्, सबै सामग्री सम्भाव्यबाट यथार्थमा परिणत हुन सक्छ जस्तै बरफ पग्लन सक्छ, बच्चा हुर्कन सक्छ। तर यसको कारण अर्कै हुनुपर्छ, जस्तै तापले बरफ पग्लन्छ र खानाले बच्चा हुर्कन्छ। त्यसैले ब्रह्माण्डको इतिहास यस्तै अनन्त परिवर्तनमा हेर्न सकिन्छ, तर एक्विनस यस कडीको सुरुवात कुनै गुह्य तत्त्वले गरेको हुनुपर्ने र केही चीज आफै परिवर्तन नहुने तर्क गर्छन्। त्यो तत्त्व अनन्त छ, किनकि यो सबै परिवर्तनको जड कारण हो र यो अन्य कारणबाट हुन सक्दैन।

---

## विज्ञानले भगवानबारे अस्तित्व नकार्नुको सट्टा यसको परिभाषा झन् विस्तार गरेको छ। हामीले प्रकृतिको उत्पत्तिबारे अनुमान गर्नुअघि त्यसको नियम बुझ्नुपर्छ।

---

उक्त गुह्य तत्त्वलाई नै भगवान भनी एक्विनसले परिभाषित गरेका छन्। यसलाई सृष्टिकारण मानेर धेरै दार्शनिकले थप व्याख्या गरेका छन्। १८ औँ शताब्दीमा जर्मन दार्शनिक गट्फाइड लेब्निजले भगवान 'आवश्यक तत्त्व जसको अस्तित्वको कारण छ' भनी व्याख्या गरेका थिए।

अझ रमाइलो कुरा त, लेब्निज आफै एक गणितज्ञ र भौतिकशास्त्री थिए। उनले आइज्याक न्युटनकै समयमा तर स्वतन्त्र रूपले अवकलन र समाकलन गणित आविष्कार गरेका थिए। दुवै लेब्निज र न्युटन आफूलाई प्रकृतिवादी दार्शनिक भन्थे र विज्ञान एवं धर्मशास्त्र दुवैलाई आधार मान्थे।

२० औँ शताब्दीसम्म आइपुग्दा वैज्ञानिकहरूले भगवानबारे खोज गरेनन्, तर भौतिकशास्त्र र आस्थाबीच सम्बन्ध टुटेको भने थिएन। धर्मबारे बोल्ने महान् वैज्ञानिक अल्बर्ट आइन्स्टाइनले पनि भगवान्मा विश्वास गर्दैनथे तर उनी नास्तिक चाहिँ थिएनन्। उनी आफूलाई अज्ञेयवादी चाहिँ भन्थे, तर कहिलेकाहीँ उनको झुकाव १७ औँ शताब्दीमा यहुदी–डच दार्शनिक बारुच स्पिनोजाले भनेझैँ प्रकृति नै भगवान हो भन्नेतर्फ हुन्थ्यो।

आइन्स्टाइन मानव सभ्यतालाई नबुझ्ने भाषामा लेखिएका पुस्तकले भरिएको पुस्तकालयमा प्रवेश गरेको एउटा बालकसँग तुलना गर्थे। उसले पुस्तक कुनै प्रकारले राखिएको भन्ने झीनो शङ्कासम्म गर्न सक्छ, तर त्यो गुह्य क्रम उसले बुझ्न सक्दैन। शायद भगवान्बारे सबैभन्दा सर्वोत्तम मान्छेको मस्तिष्कको सोचाइ पनि त्यही छ– स्थूल ब्रह्माण्ड क्रमबद्ध रूपले नियमपूर्वक देख्छौँ, तर हामी ती नियमको झीनो अंश मात्र बुझ्दछौँ।

आइन्स्टाइन आफैले प्रायः भौतिकशास्त्रबारे बोल्दा भगवानको कुरा गर्छन्। सन् १९१९ मा ब्रिटीस वैज्ञानिकले आइन्स्टाइनको सापेक्षतावादी सिद्धान्तलाई प्रमाणित गरे, उनलाई सोधिएको थियो कि यदि त्यो सिद्धान्त प्रमाणित नभएको भए तपाईं के गर्नुहुन्थ्यो। 'त्यसो भए म भगवान्प्रति खिन्न हुन्थेँ,' उनको जवाफ थियो, 'यो सिद्धान्त सही हो।'

स्पष्ट थियो, उनी भौतिकशास्त्रको नियमले अचम्मित थिए र त्यो गणितीय हिसाबले प्रमाणित गर्न मिल्नेमा उनी भगवान्प्रति कृतज्ञ पनि थिए। 'संसारको अविरल रहस्य यसलाई बुझ्नु हो,' उनले भनेका थिए, 'यो कुरा यसरी बुझिनु जादु नै हो।'

सन् १९२० र ३० ताका क्वान्टम मेकानिक्स विषयलाई उनले मन पराएनन्, किनकि ब्रह्माण निश्चयात्मक छ अर्थात् भौतिक कार्यले सधैँ पूर्वानुमानित परिणाम दिन्छ भन्ने उनको दृढ विश्वासलाई यसले चुनौती दिन्थ्यो। क्वान्टम सिद्धान्तको अनिश्चितताबारे आइन्स्टाइनको आलोचना लोकप्रिय छ, 'भगवान्ले ब्रह्माण्डसँग जुवा खेल्दैनन्।'

यसको जवाफमा क्वान्टम मेकानिक्सका पिता मानिने निल्स बोहरले भनेका थिए रे, 'आइन्स्टाइन, भगवान्लाई के गर्ने भन्न छोड्नुहोस्।'

स्टेन्गरका लागि सृष्टिका लागि भगवान चाहिँदैन। 'प्राकृतिक अवस्था आफैमा केही हो, शून्य होइन,' उनले लेखेका छन्, 'शून्य ब्रह्माण्डलाई केही अलौकिक तत्त्व चाहिन्छ, पूरै होइन।'

क्वान्टम सिद्धान्तलाई कण भौतिकशास्त्रको आधार मानिए तापनि केही वैज्ञानिक आइन्स्टाइनझैँ यसको अनिश्चिततासँग असहज मान्छन्। यस सिद्धान्तले अलौकिक मानिएका संसारका कतिपय कुराहरूलाई व्याख्या गरेको छ, यसले हाम्रो यथार्थलाई नै परिवर्तन गर्न सक्छ र यसले अन्तरिक्षमा धेरै टाढा–टाढाका कुरा (अर्थात् आइन्स्टाइनकै शब्दमा टाढाटाढाका डरलाग्दो गतिविधि) समेत जोड्न सक्छ। प्रकृतिको नियमले ब्रह्माण्डबारे हाम्रो ज्ञानलाई पनि सीमित गर्छ। उदाहरणका लागि, हामी ब्ल्याक होलभित्र हेर्न सक्दैनौँ वा प्रकाशभन्दा टाढाका ठाउँ हेर्न सक्दैनौँ।

के यो ब्रह्माण्डमा भगवान्को लागि ठाउँ छ? भिक्टर स्टेन्गरले आफ्नो सन् २००७ को पुस्तक गड : द फेल्ड हाइपोथेसिसमा यसको जवाफ दिएका छन्। भजनकीर्तन सुन्ने र बिरामीलाई निको पार्ने भगवान्को अवधारणालाई उनले स्पष्ट नकारेका छन्, यस्तो हो भने वैज्ञानिकहरूले थाहा पाइसक्थे। त्यसपछि उनले सृष्टि र यसको नियम बनाउने अनि यसलाई हेरेर बस्ने भगवान्को पनि अस्तित्व पनि अस्वीकार गरेका छन्।

स्टेन्गरका अनुसार प्रकृतिका प्रायः नियम ब्रह्माण्डमा देखिने नियमसँग मिल्छ, जस्तै अन्तरिक्षमा विशेष विन्दु वा दिशा भन्ने हुँदैन। 'ब्रह्माण्डभित्रबाटै भौतिकशास्त्रको नियम नआएको भन्ने कुनै कारण छैन,' उनले लेखेका छन्। अन्तरिक्ष अध्येताहरूले ब्रह्माण्डको सुरुवातबारे थाहा पाएका छैनन्, ठूलो विस्फोटको सिद्धान्त त छ तर त्यसअघि के थियो भन्ने जवाफ विज्ञानलाई प्राप्त छैन। अर्का थरिले ब्रह्माण्ड निरन्तर विस्तार हुने र खुम्चिने प्रक्रियाबाट अघि बढेको भन्छन् भने कसैले फैलावका कारण नयाँ ब्रह्माण्ड निरन्तर बनिरहने बताउँछन्।

तर अर्का थरिले यस्तो फैलाव कतैबाट त सुरु हुनपर्ने बताउँदै प्रारम्भ विन्दु अकारण नहुने तर्क गर्छन्। क्वान्टम सिद्धान्तले पनि भन्छ, शून्यमा पनि ऊर्जा हुन्छ र शून्य अस्थिर हुन्छ। शून्यतामा असम्भाव्य कुरा हुन सक्छ, यसमध्ये एउटा भ्याक्युम ऊर्जा घटेर यसरी फैलाव भएको हुनसक्छ।

स्टेन्गरका लागि सृष्टिका लागि भगवान चाहिँदैन। 'प्राकृतिक अवस्था आफैमा केही हो, शून्य होइन,' उनले लेखेका छन्, 'शून्य ब्रह्माण्डलाई केही अलौकिक तत्त्व चाहिन्छ, पूरै होइन।'

तर यो निष्कर्ष निकै हतारको देखिन्छ। वैज्ञानिकहरूले क्वान्टम विषय सजिलै बुझिसकेका छैनन् र अहिलेका लागि सृष्टिका बारे परिकल्पना अनुमान मात्र हुन्। भौतिकशास्त्रको नियम अपरिहार्य भन्नुअघि यसको सबै नियम जान्नु र बुझ्नुपर्छ। अनि ब्रह्माण्ड र यसको इतिहासलाई अझ थप सूक्ष्म रूपमा बुझ्नुपर्छ।

तर्ककै हिसाबले यस क्वान्टम सृष्टिलाई ठीक मान्ने हो भने हामी त्यस्तो ब्रह्माण्डमा छौँ जसले आफैलाई र आफ्नो नियम बनायो। यो लेब्निजको भगवान्को व्याख्यासँग मेल खाँदैन र ('आवश्यक तत्त्व जसको अस्तित्वको कारण छ')? अथवा स्पिनोजाका अनुसार ब्रह्माण्ड आफै भगवान् हो भन्नेसँग पनि यसले सामञ्जस्यता राख्छ। विज्ञानले भगवान्को अस्तित्व नकार्नुको सट्टा यसको परिभाषा झन् विस्तार गरेको छ।

सही अर्थ बुझ्न भौतिकशास्त्रका लागि अझै थुप्रै कामहरू आवश्यक पर्ला, शायद यसले धर्मशास्त्रलाई समेत झन् नयाँ आयाम दिनेछ। क्वान्टम सिद्धान्तले हामीजस्ता आम मानिसलाई के दिन्छ भन्ने अझै रहस्यकै विषय छ। के हामी मानवको कुनै लौकिक महत्त्व छ होला? के ब्रह्माण्ड अनगिन्ती यथार्थबाट गुज्रेको छ, जहाँ प्रत्येकमा अर्बौं आकाशगङ्गा र शून्यताको महासागर होला? के ब्रह्माण्डको उद्देश्य आफ्नो यो भव्यता हेर्नु हो?

जवाफ हामीले पर्खनु नै पर्नेछ।

*सन् २०१९ मा स्प्रिङ्गरबाट प्रकाशित 'सेन्ट जुआन अफ न्युयोर्क: अ नोभेल अबाउट गड एन्ड स्ट्रिङ थ्योरी'को परिचय खण्डबाट साभार। अनुवाद– आभास धरानन्द राजोपाध्याय*